# भक्तमाला

प्रतिज्ञा मैले यो यमसित गर्यौँ न जन्मि अब ता ।
सिताराम् भज्न्या छू विषयहरुमा छाडि ममता ।।
प्रतिज्ञा सो बिर्सीकन जन धनै खोजि डुलियो ।
सिताराम् भज्न्या हो शिव उसै आज भुलियो ।। १ ।।

सिताराम् भज्न्या छू भनिकन प्रतिज्ञा अघि गरी ।
गयाको होस् आइस् कति दिन भजिस् भन् अघि सरी ।।
यसो भन्नन् ख्वामित् मकन यमराज् तेस् बखतमा ।
कसो भन्नू मैले भुलिकन रह्याँ एस् बखतमा ।। २ ।।

गयो बालक्‌काल्को वय पनि उसै बालरसले ।
यसै रित्ले यौवन् पनि बितिगयो मोहवशले ।।
भयो वृद्धावस्था अझ पनि भजीँदैन मनले ।
कसो गर्नन् ख्वामित् मकन यमका दूतहरुले ।। ३ ।।

घडी दिन् पक्षै मास् ऋतु अयन यै काल गतिले ।
घट्यो आयू मेरो विषय अझ खोज्दै छ मतिले ।।
कृपानाथ् हे स्वामी अब कसरि संसार तरुँला ।
कृपा राख्या जावस् नतर त अनाथ् बीच परुँला ।। ४ ।।

बडो दुर्लभ् जानोस् भरत भुमिको जन्म जनले ।
सहज् मिल्छन् ठाकुर् हरि भजि लिया शुद्ध मनले ।।
बखत् यस्तो जानी हरिचरणमा मन् पनि धरोस् ।
निरन्तर् श्रद्धाले हरि खुशि हुन्या दान् पनि गरोस् ।। ५ ।।

जगत्मा पृथ्वीका अधिपति बडा दौलथि थिया ।
मरण्का बेलामा बुझिलिनु ति क्या लीकन गया ।।
निरन्तर यै सम्झी हरि भजि रहोस् शुद्ध मनले ।
परन्तू हक् मन्यैँ छ त बटुलि क्या गर्नु धनले ।। ६ ।।

कडोरन्का मालिक् अघि पनि बडा वीर्हरु भया ।
तिमध्ये जो जो हुन् हरि भजिलिन्या पार् पनि गया ।।

मरण्का बेलामा हरिबिनु त क्या भर् छ अरुको ।
शरण् लेला सो नाथ् अधिपति अजामीलहरुको ।। ७ ।।

जगत्मा सब् ढुँड्दै सबकन विचार्या। जन पनि ।
बडा हूँ भन्न्याका घरघर रह्याको धन धनै ।।
रह्या छन् कालैका वश परिरह्याका जन पनि ।
बुझ्याँ मैले सब्को रिपुसरि भयाको पनि मनै ।। ८ ।।

मनुष्यै योनीमा यदि हरि भज्यो ता जन तर्यो ।
अवश्यै फन्दामा हरिकन न भज्न्या पछि पर्यो ।।
जगत्मा यो चाला बुझिकन विचार् गर्नु जनले ।
निरन्तर् ठाकुर्को चरणकमलै धर्नु मनले ।। ९ ।।

भजौँला भन्दैमा कति कति बित्यो जन्म जनको ।
मरौँला भन्नाको अझ पनि विचार् छैन मनको ।।
अहो दैवी माया बडि बलवती जानि मनले ।
विचार् गर्दै गर्दै हरि भजिलिनू भक्त जनले ।। १० ।।





दया पाऊँ ख्वामित् विनति छ हजुर्का चरणमा ।
नलागुन् पाशा फेर् मकन यमराज्का मरणमा ।।
दयाले पो छुट्छन् सकल जनका दुःखहरु ता ।
उपायै क्यै छैनन् कहिँ पनि दया देखि अरु ता ।। ११ ।।

भरोसा ख्वामित्को गरिकन रहन्छू दिनदिनै ।
सहन्छू सब् आपत् जति जति त पर्छन् छिनछिनै ।।
पर्या ूका पर्न्यैं छन् मकन करुणा दूर् हुन गया ।
सहज्मा टर्न्यैं छन् मकन करुणा पो यदि भया ।। १२ ।।

मुरारे ख्वामित्का चरणतलमा मन् न धरि ता ।
बडो दुर्लभ् देख्याँ सकल जनको मुक्ति गति ता ।।
विचार् गर्छू क्यारूँ मन पनि बलैले हरि लिया ।
दशेन्द्री डाँकूले बिच बिच पसी दुःख् पनि दिया ।। १३ ।।

न कैल्हे भक्तीले गुरुचरणको ध्यान गरियो ।

न ठाकुर्को पूजा गरि तुलसिको पत्र धरियो ।।
दया भो ख्वामित्को भनिकन भन्या पार तरियो ।
अवश्यै साँचो हो नतर यमका पास परियो ।। १४ ।।

पुकारा गर्दो छू घडि घडि रुँदो छू चरणमा ।
दया छे ख्वामित्की म त हर घडी छू चरणमा ।।
विचार् गर्थ्यो क्यारोस् भनिकन दया हुन्छ त पनि ।
झलक् पाइ भुल्न्या होस् भनिकन रिसै हुन्छ त पनि ।। १५ ।।

जगत् कोइ जान्दैनन् भनु त सबका बात् पनि भन्या ।
पलक् भर् ती योगी अघि सरि बडो ज्ञान कहन्या ।।
उनै काम् गर्छन् ता यमपुरि महाँ चोट मिलन्या ।
अहो यो क्या ले हो बुझिबुझि सबै लोक भुलन्या ।। १६ ।।

भजन् रामको ठूलो बुझिकन भजन् गर्नु जनले ।
नभुल्नू कैल्हे यस् विषय सुखमा लागि धनले ।।
अविश्वासी चोला कति रहन जाला बितिगया ।

पछीतो खुप् होला जपतप विवेक् केहि नभया ।। १७ ।।

टहल् ठाकुर्जीको अलिकति यहाँ केहि नगरी ।
गम्भीर् संसार् सागर् सहजसित पार् पुग्नु कसरी ।।
टहल् ठाकुर्जीको गरि लिन सक्यादेखि तरियो ।
विपत्का खानीमा नतर सहजै फेरि परियो ।। १८ ।।

अनाथ्को नाथ मै हूँ भनिकन हँसिलो मुख गरी ।
हरूँ यस्का पाप् ताप् भनिकन अगाडी पनि सरी ।।
कृपादृष्टी नाथ्ले यदि दिनु भया तर्छु अहिले ।
कृपादृष्टी बाहेक् तप गरि त पार् तर्छु कहिले ।। १९ ।।

अवीवेकी मूढो त्रिभुवनविषे को छ म सरी ।
बिताञाँ व्यर्थै यस् विषयरसमा जन्म यसरी ।।
कउन् ठूलो चिज् हो विषयरस यस् पाजि रसमा ।
दिञाँ मैले यो मन् बुझिबुझि पर्याँ मोहवशमा ।। २० ।।

